# विकासवादको वैदिक सिद्धान्त

- आचार्य अग्निव्रत नैष्ठिक












**उच्छ्वञ्चमाना पृथिवी सु तिष्ठतु सहस्रं मित उप हि श्रयन्ताम्।**
**ते गृहासो घृतश्चुतो भवन्तु विश्वाहास्मै शरणाः सन्त्वत्र।।** ऋग्वेद:१०/१८/१२, अथर्व:१८/३/५१

सृष्टि तथा मनुष्यको उत्पत्ति वैज्ञानिक जगत्का लागि कौतुहलको विषय रहेको छ। चार्ल्स डार्विनको विकासवादको परिकल्पना पश्चात यसको समर्थन तथा विरोध दुवै पक्षमा बहस चल्दै आएको छ। विकासवादी अवधारणाले अमीबा देखि मनुष्य सम्मको श्रृंखलाको क्रमिक विकासको देन मान्दछ, जसमा विभिन्न प्रजातिहरुमा परिस्थिति अनुकूल केहि न केहि परिवर्तन आएर तिनै बाट नयाँ-नयाँ प्रजातिहरु उत्पन्न भइरहे। यस प्रकार यो विचारधारा अनुसार मनुष्य एवं अन्य पशु-पक्षि, कीट-

पतंग आदि सबैका पूर्वज एकै थिए तथा आधुनिक बाँदर मनुष्यको सर्वाधिक निकटको सम्बन्धी हो। विभिन्न प्रजातिहरुमा नानाथरि अङ्गहरुको विकास स्वयमेव आवश्यकता अनुरूप भैरहेको छ अर्थात् एक प्राणी अर्को प्राणीमा कुनै विकृतिका कारण बदलिदै आयो। यो विकासवादको विरुद्ध पनि अनेकौं विदेशी वैज्ञानिकहरुले समय-समयमा अनेक सिद्धान्त दिएका छन्। शारीरिक विकास, बौद्धिक विकास एवं भाषाको विकास, यी तीन विशयमा विकासवादका विरोधी विदेशी वैज्ञानिकहरुले पनि अनेक गम्भीर प्रश्न गरेका छन्, तर विकासवादीहरुले यी प्रश्नहरुका समुचित उत्तर दिन सकेका छैनन्। यता वैदिक सिद्धान्तलाई सर्वोपरी मान्ने महर्षि दयानन्द सरस्वती एवं उनका परवर्ती तथा अनुयायी अनेक विद्वानहरुले विकासवादको अवधारणालाई मिथ्या सिद्ध गरेका छन्, तै पनि डार्विनको विकासवाद आज पनि केहि पूर्वाग्रही वैज्ञानिकहरुका लागि एक आदर्श सिद्धान्त बनेको छ।

गत वर्ष भारतका केन्द्रीय मानव संसाधन विकास राज्य मंत्री डा. सत्यपालसिंहले आफ्नो एक वक्तव्यमा भनेका थिए कि "...हामी समस्त मानव बाँदरका नभएर मानवकै सन्तान हौँ" तर तिनै पूर्वाग्रही महानुभावहरुले कोलाहल गर्दै उनि माथि चतुर्दिक् आक्रमण गर्न थाले। पुरै देशका वैज्ञानिक तथा वैज्ञानिक संस्थान पनि एकजुट हुन्छन्। मैले पनि यी सबै संग सामाजिक संजालका माध्यम बाट अनेक प्रष्न सोधेको थिएँ तर कुनै पनि प्रमाणित संस्था वा विद्वान्हरुले मेरा ति प्रश्नहरुका उत्तर दिने शाहस देखाएनन्, उल्टो केहि महानुभावहरुले अनर्गल प्रलाप नै गरे। यी महानुभावहरुलाई कुनै पनि स्वदेशी अथवा विदेशी वैज्ञानिक अथवा विचारकको यो कथन कदापि स्वीकार छैन कि हामी मनुष्यका नै सन्तान हौं।

मेरा प्रश्नहरुको उत्तरमा केवल मेरो सिद्धान्त जान्ने इच्छा व्यक्त गर्नुहुने महानुभावहरुका लागि मैले यहाँ वैदिक विकासवादको बारेमा आफ्नो संक्षिप्त विचार प्रस्तुत गर्दछुः-

वस्तुतः 'विकासवाद' शब्दमा विचार गर्नेहो भने यो शब्द अति उत्तम तथा सार्थक छ, तर डार्विन एवं उनका समर्थकहरुले यो शब्दको समुचित अर्थ जानेन र आफ्नो अवैज्ञानिक मतलाई 'विकासवाद' विशेषणले विभूशित गर्ने प्रयास गरे। यदि हामी सम्पूर्ण सृष्टि माथि गम्भीरताले विचार गर्यौं भने स्पष्ट हुन्छ कि सम्पूर्ण सृष्टि एवं यसका प्रत्येक उत्पन्न पदार्थहरु विकासको लिस्नो चढ्दै-चढ्दै वर्तमान स्वरूपमा आज देखाई दिइरहेका छन्। क्रमिक विकास बिना त प्राणी जगत्को मात्र कुरो के गरौं र, कुनै लोक-लोकान्तर वा एक कण, फोटोन आदि पनि कहिल्यै बन्न सक्दैनन्। वैदिक विज्ञान विकासवादको विशद व्याख्या गर्दछ, तर हाम्रो विकासवाद डार्विनको विकासवाद जस्तो

कदापि हैन। डार्विनको विकासवाद वस्तुतः विकासवाद नभएर अनियन्त्रित तथा बुद्धिविहीन यदृच्छयावाद (मनोमानीपन) हो, जसलाई भ्रमवश वैज्ञानिक विकासवादको नाम दिइदैछ।

वास्तवमा विकासको अर्थ हो- बीज बाट अंकुर, अंकुर बाट बिरुवा, त्यसबाट पुष्प, फल तथा पुनः बीज उत्पन्न हुनु। आज विज्ञानले जसलाई मूल कण मान्दै छ, ति क्वार्क तथा फोटोन्सहरु पनि वास्तवमा मूल पदार्थ हैनन्। ति पनि सूक्ष्म रश्मिहरुका संघनित रूपहरु हुन् अर्थात् ति रश्मिहरुका नाना समुदायहरुका विकसित रूप हुन्। जो String theoristले यी कणहरुलाई सूक्ष्म Strings बाट निर्मित मान्दछन्, ति Strings पनि मूल तत्व नभएर वैदिक रश्मिहरुका संघनित तथा विकसित रूप हुन्। Strings तथा कण वा फोटोन्सको विकास सम्बन्धमा वर्तमान विज्ञान अनभिज्ञ छ। जीवविज्ञानीहरु जुन अमीबालाई सबभन्दा सानो इकाई मान्दछन् अथवा त्यस भित्र विद्यमान गुणसूत्र, जीन्स, D.N.A. आदिलाई सूक्ष्मतम पदार्थ मान्दछन्, तिनीहरुले यो जान्दैनन् कि जहाँ उनको जीव विज्ञान समाप्त हुन्छ, त्यहाँ भौतिक विज्ञान प्रारम्भ हुन्छ र जहाँ वर्तमान भौतिक विज्ञान समाप्त हुन्छ, त्यहाँ वैदिक भौतिक विज्ञान प्रारम्भ हुन्छ र जहाँ वैदिक भौतिक विज्ञानको सीमा समाप्त हुन्छ, त्यहाँ बाट वैदिक आध्यात्मिक विज्ञान प्रारम्भ हुन्छ। आजको विडम्बना यहि छ कि वैदिक भौतिक विज्ञान एवं वैदिक आध्यात्मिक विज्ञानको नितान्त उपेक्षा गरेर वा यसको उपहास वा विरोध गरेर भौतिक विज्ञान एवं जीव विज्ञान आदिको समस्याहरुको हल खोज्ने प्रयास गरिदैछ। यो पनि एक दुःखद सत्य हो कि संसारलाई वैदिक भौतिक विज्ञान संग अवगत गराउनेहरु पनि कहाँ छन र? यस कारण वर्तमान विज्ञान अनेक समस्या हरुबाट ग्रस्त छ तथा एक समस्याको समाधान गर्ने प्रयास गर्दछ तर अनेकौं नयाँ समस्याहरुलाई उत्पन्न पनि गर्दछ। एउटाले कुनै नयाँ प्रविधि (टेक्नोलोजी) को आविष्कार त गर्दछ तर साथमा नानाथरिका दुश्प्रभावहरु पनि उत्पन्न गर्दछ। औषधिको विकासका साथमा रोगहरुको पनि निरन्तर विकास हुँदैछ। सुखका साधनहरुको विकासका साथ-साथ अपराधहरु एवं पर्यावरण प्रदूषणलाई पनि समृद्ध गर्दै छ। अस्तु..

नमस्ते..!